# दैनिक यज्ञ - अग्निहोत्र प्रक्रिया







**अग्निहोत्र**: - अग्नये परमेश्वराय जलवायुशुद्धिकरणाय च होत्रं हवनं यस्मिन कर्मणि क्रियते तदग्निहोत्रम्।
अग्नि वा परमेश्वरको लागि जल र पवनको शुद्धि वा ईश्वरको आज्ञा पालनार्थ होत्र जुन हवन अर्थात् दान गरिन्छ, त्यसलाई **अग्निहोत्र** भनिन्छ। जस्तै- सन्ध्या तथा प्रातः कालको दुवै सन्धि बेलामा सन्ध्योपासना गर्नु, यसैप्रकारले अग्निहोत्र पनि दुई समयमा नित्य गर्ने गर्नु।
दैनिक अग्निहोत्र विधि:- यदि प्रातः र साँझ दुवै समयको यज्ञ एकै समयमा गर्नेहो भने यसप्रकारले गर्नु:-

## अथ अग्निहोत्रमंत्र:

### *जल लिएर आचमन गर्ने मंत्र:*

*(दायाँ हत्केलाको बीचभागमा त्यति मात्र जल लिनु जति हृदयप्रदेश सम्म मात्र पुगोस्, यसबाट घाँटीको सफाई हुन्छ, कफको समस्या हल हुन्छ र आवाज मधुर र प्रष्ट हुन्छ।)*

**ओ३म् अमृतोपस्तरणमसि स्वाहा ।१।** यस मन्त्रबाट प्रथम आचमन गर्ने
**ओ३म् अमृतापिधानमसि स्वाहा ।२।** यसबाट दोस्रो
**ओ३म् सत्यं यश: श्रीर्मयि श्री: श्रयतां स्वाहा ।३।** यसबाट तेस्रो

मंत्रार्थ - हे सर्वरक्षक अमर परमेश्वर! यो सुखप्रद जल प्राणिहरुको आश्रयभूत हो, यो हाम्रो वाणी शुभ होस्। यो मैले सत्यनिष्ठा पूर्वक मानेर भन्दछु र सुष्ठूक्रिया आचमन जस्तै तपाईलाई आफ्नो अंत:करणमा ग्रहण गर्दछु ।।१।।
हे सर्वरक्षक अविनाशी स्वरूप, अजर परमेश्वर! तपाइँ  हाम्रा आवरण तथा वस्त्र समान अर्थात सदा-सर्वदा सबतिर बाट रक्षक हुनुहुन्छ, यो सत्यवचन मैले सत्यनिष्ठा पूर्वक मानेर भन्दछु र

सुष्ठूक्रिया आचमन जस्तै तपाईलाई आफ्नो अंत:करणमा ग्रहण गर्दछु ।।२।।
हे सर्वरक्षक ईश्वर सत्याचरण, यश एवं प्रतिष्ठा, विजयलक्ष्मी, शोभा धन-ऐश्वर्य आदि ममा स्थित रहुन्, यो मैले सत्यनिष्ठापूर्वक प्रार्थना गर्दछु र सुष्ठूक्रिया आचमन जस्तै तपाईलाई आफ्नो अंत:करणमा ग्रहण गर्दछु ।।३।।

## *जल लिएर अंग स्पर्श गर्ने मंत्र:-*

यसको प्रयोजन शरीरका सब महत्त्वपूर्ण अंगमा स्फूर्ति र पवित्रताको समावेश तथा अंतःचेतना जगाउनु ताकि यज्ञ जस्तो पवित्र र श्रेष्ठ कृत्य गर्न सकियोस्। बायाँ हातको हत्केलामा जल लिएर दाहिने हातका पैती र मध्यमा औंलाहरु त्यसमा डोबेर बताइए अनुसारका अंग तथा स्थानमा मंत्रोच्चारणका साथ स्पर्श गर्नु ।

**ओ३म् वाङ्म आस्येऽस्तु ॥** यस मंत्रले मुखको स्पर्श गर्नु
**ओ३म् नसोर्मे प्राणोऽस्तु ॥** यस मंत्रले नासिका(नाक)को दुवै छिद्र भाग
**ओ३म् अक्ष्णोर्मे चक्षुरस्तु ॥** यसबाट दुवै आँखा
**ओ३म् कर्णयोर्मे श्रोत्रमस्तु ॥** यसबाट दुवै कान
**ओ३म् बाह्वोर्मे बलमस्तु ॥** यसबाट दुवै भुजा/बाहु (पाखुरा)
**ओ३म् ऊर्वोर्मे ओजोऽस्तु ॥** यसबाट दुवै जंघा/जाँघ
**ओ३म् अरिष्टानि मेऽङ्गानि तनूस्तन्वा मे सह सन्तु ॥** यसबाट सारा शरीरमा जलको मार्जन गर्नु
मंत्रार्थ - हे सर्वरक्षक परमेश्वर! मैले तपाइँ संग प्रार्थना गर्दछु कि मेरो मुखमा वाक् इन्द्रिय पूर्ण आयुपर्यन्त स्वास्थ्य एवं सामर्थ्य सहित विद्यमान रहोस्।
हे सर्वरक्षक परमेश्वर! मेरा दुवै नासिका (नाक)को भागमा प्राणशक्ति पूर्ण आयुपर्यन्त स्वास्थ्य एवं सामर्थ्यसहित विद्यमान रहोस्।
हे सर्वरक्षक परमेश्वर! मेरा दुवै आँखामा दृष्टिशक्ति पूर्ण आयुपर्यन्त स्वास्थ्य एवं सामर्थ्यसहित विद्यमान रहोस्।
हे सर्वरक्षक परमेश्वर! मेरा दुवै कानमा सुन्ने शक्ति पूर्ण आयुपर्यन्त स्वास्थ्य एवं सामर्थ्यसहित विद्यमान रहोस्।
हे सर्वरक्षक परमेश्वर! मेरा भुजा/बाहु (पाखुरा)मा पूर्ण आयुपर्यन्त बल विद्यमान रहोस्।
हे सर्वरक्षक परमेश्वर! मेरा जंघा/ जाँघमा बल-पराक्रम सहित सामर्थ्य पूर्ण आयुपर्यन्त विद्यमान रहोस्।
हे सर्वरक्षक परमेश्वर! मेरो शरीर र अंग-प्रत्यंगहरु रोग एवं दोष रहित बनिरहुन, यी अंग-प्रत्यंगहरु मेरो शरीरका साथ सम्यक् प्रकारले संयुक्त भएर सामर्थ्य सहित विद्यमान रहुन्।

## *ईश्वरको स्तुति, प्रार्थना एवं उपासना मंत्र:*

**ओ३म् विश्वानी देव सवितर्दुरितानि परासुव ।**
**यद भद्रं तन्न आ सुव ॥१॥** (य.३०/३ - ऋ.५/८२/५)
*मंत्रार्थ - हे समस्त सुखका दाता ज्ञानका प्रकाशक सकल जगतका उत्पत्तिकर्ता एवं समग्र ऐश्वर्ययुक्त परमेश्वर! तपाइले हाम्रा सम्पूर्ण दुर्गुणहरु, दुर्व्यसनहरु र दुखहरुलाई दूर गरिदिनुहोस् र जो कल्याणकारक गुण, कर्म, स्वभाव, सुख र पदार्थहरु छन्, तिनलाई राम्रोसंग प्राप्त गराउनुहोस्।*

**ओ३म् हिरण्यगर्भ: समवर्त्तताग्रे भूतस्य जात: पतिरेक आसीत् ।**
**स दाघार पृथिवीं द्यामुतेमां कस्मै देवाय हविषा विधेम ॥२॥** (ये.१३/४)
*मंत्रार्थ - सृष्टि उत्पन्न हुनु भन्दा पूर्व र सृष्टि रचनाको आरम्भमा स्वप्रकाशस्वरूप, जसले समस्त प्रकाशयुक्त सूर्य, चन्द्र, तारा,नक्षत्र, ग्रह-उपग्रह आदि पदार्थहरुलाई उत्पन्न गरेर आँफू भित्र धारण गरेर राखेको छ,त्यो परमात्मा सम्यक् रूपले वर्तमान थियो। त्यहि नै उत्पन्न भएका सम्पूर्ण जगत का प्रसिद्ध स्वामी केवल एक्लै थियो। त्यहि परमात्माले यस पृथ्वीलोक र ध्यूलोक आदिलाई धारण गरेको छ, हामीहरु उस सुखस्वरूप, सृष्टिपालक, शुद्ध एवं प्रकाश-दिव्य-सामर्थ्य युक्त परमात्माको प्राप्तिको लागि ग्रहण गर्न योग्य योगाभ्यास एवं हव्य पदार्थहरु द्वारा विशेष भक्ति गर्दछौं।*

**ओ३म् य आत्मदा बलदा यस्य विश्व उपासते प्रशिषं यस्य देवा: ।**
**यस्य छायाऽमृतं यस्य मृत्यु: कस्मै देवाय हविषा विधेम ॥३॥** (ये.२५/१३)
*मंत्रार्थ - जुन परमात्मा आत्मज्ञान दाता, शारीरिक, आत्मिक र सामाजिक बल प्रदाता हो, जसको सब विद्वानहरुले उपासना गर्दछन्, जसको शासन, व्यवस्था, शिक्षालाई सबैले मान्दछन्, जसको आश्रय नै मोक्षसुखदायक छ, र जसलाई नमान्नु अर्थात भक्ति नगर्नु मृत्यु आदि कष्टको हेतु हो, हामीहरु उस सुखस्वरूप एवं प्रजापालक शुद्ध एवं प्रकाशस्वरूप, दिव्य सामर्थ्य युक्त परमात्मालाई प्राप्तिको लागि ग्रहण गर्न योग्य योगाभ्यास एवं हव्य पदार्थ द्वारा विशेष भक्ति गर्दछौं ।*

**ओ३म् य: प्राणतो निमिषतो महित्वैक इन्द्राजा जगतो बभूव।**
**य ईशे अस्य द्विपदश्चतुष्पद: कस्मै देवाय हविषा विधेम ॥४॥** (ये.२३/३)
*मंत्रार्थ - जो प्राणधारी चेतन र अप्राणधारी जड जगतको आफ्नो अनंत महिमाको कारणले एक मात्र सर्वोपरी एक्लै विराजमान राजा भएको छ, जो यस दुई खुट्टे मनुष्य आदि र चार खुट्टे पशु आदि प्राणिहरुको रचना गर्दछ र उनको सर्वोपरी स्वामी हो, हामीहरु उस सुखस्वरूप एवं प्रजापालक शुद्ध एवं प्रकाशस्वरूप, दिव्यसामर्थ्ययुक्त परमात्मालाई प्रप्तिको लागि योगाभ्यास एवं हव्य पदार्थ द्वारा विशेष भक्ति गर्दछौं ।*

**ओ३म् येन द्यौरुग्रा पृथिवी च द्रढा येन स्व: स्तभितं येन नाक: ।**

**यो अन्तरिक्षे रजसो विमान: कस्मै देवाय हविषा विधेम ॥५॥** (ये.३२/६)

*मंत्रार्थ - जुन परमात्माले तेजोमय द्युलोकमा स्थित सूर्य आदि र पृथिवीलाई धारण गरेको छ, जसले समस्त सुखलाई धारण गरेको छ, जसले मोक्षलाई धारण गरेको छ, जो अंतरिक्षमा स्थित समस्त लोक-लोकान्तरहरु आदिको विशेष नियम पूर्वक निर्माता, धारणकर्ता, व्यवस्थापक एवं व्याप्तकर्ता हो, हामीहरु उस शुद्ध एवं प्रकाशस्वरूप, दिव्यसामर्थ्ययुक्त परमात्मालाई प्राप्तिको लागि ग्रहण गर्न योग्य योगाभ्यास एवं हव्य पदार्थ द्वारा विशेष भक्ति गर्दछौं।*

**ओ३म् प्रजापते न त्वदेतान्यन्यो विश्वा जातानि परिता बभूव ।**
**यत्कामास्ते जुहुमस्तनो अस्तु वयं स्याम पतयो रयीणाम् ॥६॥** (ऋ.१०/१२१/१०)

*मंत्रार्थ - हे सब प्रजाहरुको पालक स्वामी परमत्मन! तपाइँ भन्दा भिन्न अर्को कसैले ति र यी अर्थात टाढा र सपिप स्थित समस्त उत्पन्न भएका जड-चेतन पदार्थहरुलाई वशीभूत गर्न सक्दैन, केवल तपाई नै यस जगतलाई वशीभूत राख्नमा समर्थ हुनुहुन्छ। जुन-जुन पदार्थको कामना गर्ने हामिहरु तपाइको योगाभ्यास, भक्ति र हव्य पदार्थले स्तुति-प्रार्थना-उपासना गर्दछौं, ति पदार्थको हाम्रो कामना सिद्ध होस्, जसबाट हामि उपासकहरु धन-ऐश्वर्यहरुको स्वामी हुन सकौं।*

**ओ३म् स नो बन्धुर्जनिता स विधाता धामानि वेद भुवनानि विश्वा।**
**यत्र देवा अमृतमानशाना स्तृतीये घामन्नध्यैरयन्त ॥७॥** (ये.३२/१०)

*मंत्रार्थ - त्यो परमात्मा हाम्रा दाजु-भाइ र सम्बन्धीका समान सहायक छ, सकल जगतको उत्पादक हो, त्यहि नै सबै कामलाई पूर्ण करने वाला हो। त्यसले समस्त लोक-लोकान्तरहरुलाई र स्थान-स्थानलाई जान्दछ। यो त्यहि परमात्मा हो जसको आश्रयमा योगीजनले मोक्ष प्राप्त गर्दै, मोक्षानन्दको सेवन गर्दै, तेस्रो धाम अर्थात, परब्रह्म परमात्माको आश्रयबाट प्राप्त मोक्षानन्दमा स्वेच्छापूर्वक विचरण गर्दछन। त्यहि परमात्माको हामि  भक्ति गर्दछौं।*

**ओ३म् अग्ने नय सुपथा राय अस्मान् विश्वानि देव वयुनानि विद्वान।**
**युयोध्यस्मज्जुहुराणमेनो भूयिष्ठां ते नम उक्तिं विधेंम ॥८॥** (ये.४०/१६)

*मंत्रार्थ - हे ज्ञानप्रकाशस्वरूप, सन्मार्गप्रदर्शक, दिव्यसामर्थयुक्त परमात्मन! हामीलाई ज्ञान-विज्ञान, ऐश्वर्य आदिको प्राप्ति गराउनको लागि धर्मयुक्त, कल्याणकारी मार्ग बाट लैजानुहोस् । तपाइँले समस्त ज्ञान र कर्महरुलाई जान्नु हुन्छ। हामि बाट कुटिलतायुक्त पापरूप कर्मलाई हटाइदिनुहोस्। यसै हेतु हामिले तपाइको विविध प्रकारले र अधिकाधिक स्तुति-प्रार्थना-उपासना एवं सत्कार नम्रतापूर्वक गर्दछौं।*

## *दीप प्रज्वलन गर्ने मंत्र:*

**ओ३म् भूर्भुवः स्वः ॥**

*मंत्रार्थ - हे सर्वरक्षक परमेश्वर! तपाई नै सबका उत्पादक, प्राणाधार समस्त दुःखहरु हटाउने, सुखस्वरूप एवं सुखदाता हुनुहुन्छ। तपाइको कृपाले मेरो यो अनुष्ठान सफल होस्। अथवा हे ईश्वर! तपाइँ सत्,चित्, आनन्दस्वरूप हुनुहुन्छ। तपाइको कृपाले यो यज्ञीय अग्नि पृथिवीलोकमा, अन्तरिक्षमा र द्युलोकमा विस्तीर्ण भएर लोकोपकारक सिद्ध होस्।*

## *यज्ञ कुण्डमा अग्नि स्थापित गर्ने मंत्रः*

**ओ३म् भूर्भुवः स्वर्द्यौरिव भूम्ना पृथिवीव वरिम्णा ।**
**तस्यास्ते पृथिवि देवयजनि पृष्ठेऽग्निमन्नादमन्नाद्यायादधे ॥** (ये.३/५)

*मंत्रार्थ - हे सर्वरक्षक सबका उत्पादक, प्राणाधार, दुखविनाशक, सुखस्वरूप एवं सुखप्रदाता परमेश्वर! तपाइको कृपाले म महत्ता या गरिमामा द्युलोकको समान, श्रेष्ठता या विस्तारमा पृथिवी लोकको समान होऊँ । देवयज्ञको आधारभूमि पृथिवीको तलमा हव्य द्रव्यको भक्षण गर्ने यज्ञीय अग्निलाई, भक्षणीय अन्न एवं धर्मानुकूल भोगको प्राप्ति को लागि भक्षण सामर्थ्य र भोग सामर्थ्य प्राप्तिको लागि यज्ञकुण्डमा स्थापित गर्दछु।*

## *अग्नि प्रदीप्त गर्ने मंत्रः*

**ओ३म् उद् बुध्यस्वाग्ने प्रतिजागृहित्विमिष्टापूर्ते सं सृजेथामयं च ।**
**अस्मिन्त्सधस्थे अध्युत्तरस्मिन् विश्वे देवा यजमानश्च सीदत ॥**(ये.१५/५४)

*मंत्रार्थ - म सर्वरक्षक परमेश्वरको स्मरण गर्दै यहाँ कामना गर्दछु कि हे यज्ञाग्ने! तिमि भलिभाँती तरिकाले उद्दीप्त होऊ, र प्रत्येक समिधालाई प्रज्वलित गर्दै पर्याप्त ज्वालामयी होऊ। तिमि र यी यजमान मिलेर इष्ट र पूर्त कर्मलाई सम्पादित गर। यस अति उत्कृष्ट, भव्य र अत्युच्च यज्ञशालामा सब विद्वान र यज्ञकर्ताजन मिलेर बस।*

# *घिउमा डुबाएका तीन समिधा राख्ने मंत्रः*

*[जब अग्नि समिधाहरुमा प्रविष्ट हुन थाल्छ तव चन्दन, पलाश, समी, आँप, डुम्री आदिका आठ-आठ अंगुल तीनवटा काठ घृतमा डुबाएर ति मध्ये एक-एक निकालेर निम्न एक-एक मन्त्रले एक-एक समिधा अग्निमा चढाउने]*

यस मंत्रले प्रथम समिधा राख्नु-

**ओ३म् अयं त इध्म आत्मा जातवेदस्तेनेध्यस्व वर्द्धस्व चेद्ध**
**वर्धय चास्मान् प्रजया पशुभिर्ब्रह्मवर्चसेनान्नाद्येन समेधय स्वाहा।।**
**इदमग्नेय जातवेदसे इदं न मम ॥१॥** (ये.३/१)

*मन्त्रार्थ- म सर्वरक्षक परमेश्वरलाई स्मरण गर्दै कामना गर्दछु कि हे सब उत्पन्न पदार्थहरुका प्रकाशक अग्नि! यो समिधा तिम्रो जीवनको हेतु हो, ज्वलित रहनुको आधार हो। त्यस समिधाले तिमि प्रदीप्त होऊ, सबलाई प्रकाशित गर र सबलाई यज्ञीय लाभहरु बाट लाभान्वित गर र*

*हामीलाई संतान बाट एवं पशु सम्पित्त बाट बढाउ। ब्रह्मतेज (विद्या, ब्रह्मचर्य एवं अध्यात्मिक तेज बाट र अन्नादि धन-ऐश्वयर्य तथा भक्षण एवं भोग-सामर्थ्य बाट समृद्ध गर। म त्यागभावले यो समिधा हवि प्रदान गर्न चाहन्छु। यो आहुति जातवेदस संज्ञक अग्निको लागि हो,यो मेरो हैन ।।१।।*

यी दुई मन्त्रहरुले दोस्रो समिधा राख्नु-

**ओ३म् समिधाग्निं दुवस्यत घृतैर्बोधयतातिथम्|**

**आस्मिन हव्या जुहोतन स्वाहा| इदमग्नये इदं न मम ||२||** (ये.३/२)

*मन्त्रार्थ- म सर्वरक्षक परमेश्वरलाई स्मरण गर्दै वेद-आदेशको कथन गर्दछु कि हे मनुष्य हो ! समिधा द्वारा यज्ञाग्निको सेवा गर, भक्तिले यज्ञ गर। घृताहुतिहरुले गतिशील एवं अतिथि समान प्रथम सत्करणीय यज्ञाग्निलाई प्रबुद्ध गर, यसमा हव्यहरुलाई भलिभाँती तरिकाले अर्पित गर । म त्यागभावले यो समिधा-हवि प्रदान गर्न चाहन्छु । यो आहुति यज्ञाग्निको लागि हो, यो मेरो हैन ।।२।।*

**सुसमिद्धाय शोचिषे घृतं तीव्रं जुहोतन।**

**अग्नये जातवेदसे स्वाहा।। इदमग्नये जातवेदसे इदं न मम ||३||** (ये.३/३)

*मन्त्रार्थ- म सर्वरक्षक परमेश्वरलाई स्मरणपूर्वक वेद-आदेशको कथन गर्दछु कि हे मनुष्य हो ! उत्तम प्रकारले प्रदीप्त ज्वालायुक्त जातवेदस् संज्ञक अग्निको लागि वस्तुमात्रमा व्याप्त एवं उनको प्रकाशक अग्निको लागि उत्कृष्ट घृतको आहुतिहरु देऊ। म त्याग भावले समिधाको आहुति प्रदान गर्दछु, यो आहुति जातवेदस् संज्ञक माध्यमिक अग्निको लागि हो, यो मेरो हैन ।।३।।*

यस मन्त्रले तेस्रो समिधा राख्नु-

**ओ३म् तन्त्वा समिद्भिरङ्गिरो घृतेन वर्द्धयामसि।**

**बृहच्छोचा यविष्ठय स्वाहा।।इदमग्नेऽङ्गिरसे इदं न मम।।४।।**

*मन्त्रार्थ - म सर्वरक्षक परमेश्वरलाई स्मरण गर्दै यो कथन गर्दछु कि हे तीव्र प्रज्वलित यज्ञाग्नि ! तिमीलाई हामि समिधाहरुले र धृताहुतिहरुले बढाउछौं। हे पदार्थहरुलाई मिलाउने र पृथक गर्ने महान शक्ति सम्पन्न अग्नि ! तिमि अत्यधिक प्रदीप्त होऊ, म त्यागभावले समिधाको आहुति प्रदान गर्दछु । यो अंगिरस संज्ञक पृथिवीस्थ अग्निको लागि हो, यो मेरो हैन।*

निम्न मन्त्रले घृतको पांच आहुति दिनु-

**ओ३म् अयं त इध्म आत्मा जातवेदस्तेनेध्यस्व वद्धर्स्व चेद्ध वधर्य चास्मान्**

**प्रजयापशुभिब्रह्मवर्चसेनान्नाद्येन**

**समेधय स्वाहा।इदमग्नये जातवेदसे - इदं न मम।।१।।**

*मन्त्रार्थ- म सर्वरक्षक परमेश्वरलाई स्मरण गर्दै कामना गर्दछु कि हे सब उत्पन्न पदार्थहरुका प्रकाशक अग्नि ! यो घृत जो जीवनको हेतु हो, ज्वलित रहनुको आधार हो। यस घृतले तिमि प्रदीप्त होऊ र ज्वालाहरुले बढ तथा सबलाई प्रकाशित गर, सबलाई यज्ञीय लाभहरुले लाभान्वित गर र हामीलाई संतान बाट, पशु सम्पित्त बाट बढाउ। विद्या, ब्रह्मचर्य एवं आध्यात्मिक तेजले र अन्नादि धन ऐश्वर्य तथा भक्षण एवं भोग सामर्थ्यले समृद्ध गर। म त्यागभावले यो घृत प्रदान गर्दछु । यो आहुति जातवेदस् संज्ञक अग्निको लागि हो, यो मेरो हैन ।।१।।*

## जल-प्रसेचन मन्त्र:

**ओ३म् अदितेऽनुमन्यस्व।।** यस मन्त्रले पूर्व दिशामा

*मन्त्रार्थ- हे सर्वरक्षक अखण्ड परमेश्वर ! मेरो यस यज्ञकर्मलाई अनुमोदन गर्नुहोस् अर्थात मेरो यो यज्ञानुष्ठान अखिण्डत रूपले सम्पन्न भैरहोस। अथवा पूर्व दिशामा, जलसिञ्चन गरे झैं मैले यज्ञीय पवित्र भावनाहरुको प्रचार प्रसार निर्बाध रूपले गर्न सकूँ, यइस कार्यमा मेरो सहायता गर्नुहोस्।*

**ओ३म् अनुमतेऽनुमन्यस्व।।** यस मन्त्रले पश्चिम दिशामा

*मन्त्रार्थ- हे सर्वरक्षक यज्ञीय एवं ईश्वरीय संस्काहरुको अनुकूल बुद्धि बनाउनमा समर्थ परमात्मन! मेरो यस यज्ञकर्मको अनुकूलता संग अनुमोदन गर्नुहोस् अर्थात यो यज्ञानुष्ठान तपाइको कृपाले सम्पन्न भैरहोस। अथवा पश्चिम दिशामा जल सिञ्चन गरेझैं मैले यज्ञीय पवित्र भावनाहरुको प्रचार-प्रसार तपाइको कृपाले गर्न सकूँ, यस कार्यमा मेरो सहायता गर्नुहोस्।*

**ओ३म् सरस्वत्यनुमन्यस्व।।** यस मन्त्रले उत्तर दिशामा

*मन्त्रार्थ- हे सर्वरक्षक प्रशस्त ज्ञानस्वरूप एवं ज्ञानदाता परमेश्वर! मेरो यस यज्ञकर्मलाई अनुमोदन गर्नुहोस् अर्थात तपाइँ द्वारा प्रदत्त उत्तम बुद्धिले मेरो यो यज्ञनुष्ठान सम्यक विधिले सम्पन्न भैरहोस। अथवा उत्तर दिशामा जल सिञ्चन गरेझैं  मैले यज्ञीय ज्ञानको प्रचार-प्रसार तपाइको कृपाले गरिरहूँ, यस कार्यमा मेरो सहायता गर्नुहोस्।*

र यस मन्त्रले वेदीको चारैतिर जल छर्किने।

**ओ३म् देव सवितः प्रसुव यज्ञं प्रसुव यज्ञपतिं भगाय।दिव्यो गन्धर्वः केतपूः केतं नः पुनातु वाचस्पतिर्वाचं नः स्वदतु।।** (ये.३०/१)

*मन्त्रार्थ-- हे सर्वरक्षक दिव्यगुण शक्ति सम्पन्न सब जगतका उत्पादक परमेश्वर! मेरो यस यज्ञ कर्मलाई बढाउनुहोस। आनन्द, ऐश्वर्य आदिको प्राप्तिको लागि याज्ञकर्ताको यज्ञकर्म अभिवृद्धिको लागि अरु अधिक प्रेरित गर्नुहोस्। तपाइँ विलक्षण ज्ञानको प्रकाशक हुनुहुन्छ, पवित्र वेदवाणी अथवा पवित्र ज्ञानको आश्रय हुनुहुन्छ, ज्ञान-विज्ञान बाट बुद्धि र मनलाई पवित्र गर्ने वाला*

*हुनुहुन्छ, अतः हाम्रो बुद्धि र मनलाई पवित्र गरिदिनुहोस। तपाइँ वाणीका स्वामी हुनुहुन्छ अतः हाम्रो वाणीलाई सुमधुर बनाइदिनुहोस्। अथवा चारै दिशाहरुमा जल सिञ्चन गरेझैं मैले यज्ञीय पवित्र भावनाहरुको प्रचार-प्रसार गर्न सकूँ, यस कार्यको लागि मलाई उत्तम ज्ञान, पवित्र आचरण र मधुर-प्रशस्त वाणीमा समर्थ बनाइदिनुहोस्।*

## ***घीउको चार आहुति: (आघारावाज्याहुति एवं आज्याभागाहुति मन्त्र)***

यस मन्त्रले वेदीको उत्तर भागमा जलिरहेको समिधामा आहुति दिनु।

**ओ३म् अग्नये स्वाहा |इदमग्नये - इदं न मम।।**

*मन्त्रार्थ- सर्वरक्षक, प्रकाशस्वरूप दोषनाशक परमात्माको लागि मैले त्यागभावनाले धृतको हवि दिन्छु। यो आहुति अग्निस्वरूप परमात्माको लागि हो, यो मेरो हैन। अथवा यज्ञाग्निको लागि यो आहुति प्रदान गर्दछु।*

यस मन्त्रले वेदीको दक्षिण भागमा जलिरहेको समिधामा आहुति दिनु।

**ओ३म् सोमाय स्वाहा |इदं सोमाय - इदं न मम।।**

*मन्त्रार्थ- सर्वरक्षक, शान्ति-सुख स्वरूप र यिनका दाता परमात्माको लागि त्यागभावनाले धृतको आहुति दिन्छु। अथव, आनन्दप्रद चन्द्रमाको लागि यो आहुति प्रदान गर्दछु।*

**यी दुई मन्त्रले यज्ञ कुण्डको मध्यमा घिउको दुई आहुति दिनु।**

**ओ३म् प्रजापतये स्वाहा |इदं प्रजापतये - इदं न मम।।**

*मन्त्रार्थ- सर्वरक्षक, प्रजा अर्थात सब जगतका पालक, स्वामी, परमात्माको लागि मैले त्यागभावले यो आहुति दिन्छु। अथवा प्रजापति सूर्यको लागि यो आहुति प्रदान गर्दछु।*

**ओ३म् इन्द्राय स्वाहा |इदं इन्द्राय - इदं न मम।।**

*मन्त्रार्थ- सर्वरक्षक परमऐश्वर्य-सम्पन्न तथा उसका दाता परमेश्वरको लागि मैले यो आहुति प्रदान गर्दछु। अथवा ऐश्वयर्शाली, शक्तिशाली वायु र विद्युतको लागि यो आहुति प्रदान गर्दछु।*

## ***दैनिक अग्निहोत्रको प्रधान आहुति - प्रातःकालीन यज्ञाहुतिका मन्त्र:***

**अब निम्न लिखित मन्त्रले घिउका साथ-साथ सामग्री आदि अन्य होम द्रव्यहरुको पनि आहुति दिनु।**

**ओ३म् सूर्यो ज्योतिर्ज्योति: सूर्य: स्वाहा।।१।।**

**ओ३म् सूर्यो वर्चो ज्योतिर्वर्च: स्वाहा।।२।।**

**ओ३म् ज्योतिः सूर्य: सुर्यो ज्योति: स्वाहा।।३।।**

**ओ३म् सजूर्देवेन सवित्रा सजूरूषसेन्द्रवत्या जुषाणः सूर्यो वेतु स्वाहा।।४।।**

- *मन्त्रार्थ- सर्वरक्षक, सर्वगतिशील सबका प्रेरक परमात्मा प्रकाशस्वरूप छ र प्रत्येक प्रकाशस्वरूप वस्तु या ज्योति परमात्ममय परमेश्वरले व्याप्त छ। उस परमेश्वर अथवा ज्योतिष्मान उदयकालीन सूर्यको लागि म यो आहुति दिन्छु ।।१।।*
- *मन्त्रार्थ- सर्वरक्षक, सर्वगतिशील र सबका प्रेरक परमात्मा तेजस्वरूपछ, जस्तै प्रकाश तेजस्वरूप हुन्छ, उस परमात्मा अथवा तेजःस्वरूप प्रातःकालीन सूर्यको लागि म यो आहुति दिन्छु ।।२।।*
- *मन्त्रार्थ- सर्वरक्षक, ब्रह्मज्योति, ब्रह्मज्ञान परमात्ममय छ, परमात्माको द्योतक छ, परमात्मा नै ज्ञानको प्रकाशक हो। म यस्तो परमात्मा अथवा सबको प्रकाशक सूर्यको लागि यो आहुति प्रदान गर्दछु ।।३।।*
- *मन्त्रार्थ- सर्वरक्षक, सर्वव्यापक, सर्वत्रगतिशील परमात्मा सर्वोत्पादक, प्रकाश एवं प्रकाशक सूर्य संग प्रीति राख्ने वाला, तथा ऐश्वयर्शाली -प्रसन्न्ता, शक्ति तथा धनैश्वर्य दिने प्राणमयी उषा संग प्रीति राख्ने वाला हो अर्थात प्रीतिपूर्वक उनलाई उत्पन्न गरेर प्रकाशित गर्ने वाला हो, हामि द्वारा स्तुति गरिएको त्यो परमात्मा हामीलाई प्राप्त होस्, हाम्रो अन्तर्मनमा प्रकाशित होस्। उस परमात्माको प्राप्तिका लागि म यज्ञाग्निमा आहुति प्रदान गर्दछु। अथवा सबका प्रेरक र उत्पादक परमात्माले संयुक्त र प्रसन्नता, शक्ति, ऐश्वयर्युक्त उषाले संयुक्त प्रातःकालीन सूर्यले हामि द्वारा गरिएको आहुतिदान सम्यक् प्रकारले भक्षण गरुन र त्यसलाई वातावरणमा व्याप्त गरिदिउन् जसबाट यज्ञको अधिकाधिक लाभ होस् ।।४।।*

## प्रातः कालीन आहुतिका शेष समान मन्त्र:

**ओ३म् भूरग्नये प्राणाय स्वाहा।इदमग्नये प्राणाय - इदं न मम।।१।।**

**ओ३म् भुवर्वायवेऽपानाय स्वाहा।इदं वायवेऽपानाय -इदं न मम।।२।।**

**ओ३म् स्वरादित्याय व्यानाय स्वाहा।इदमादित्याय व्यानाय -इदं न मम।।३।।**

**ओ३म् भूर्भुवः स्वरग्निवाय्वादित्येभ्यः प्राणापानव्यानेभ्यः स्वाहा।**

**इदमग्निवाय्वादित्येभ्यः प्राणापानव्यानेभ्यः - इदं न मम।।४।।**

- *मन्त्रार्थ- सर्वरक्षक, सबका उत्पादक एवं सतस्वरूप, सर्वत्र व्यापक, प्राणस्वरूप परमात्मालाई प्राप्तिको लागि म यो आहुति दिन्छु। यो आहुति अग्नि र प्राणसंज्ञक परमात्माको लागि हो। यो मेरो हैन। अथवा परमेश्वरको स्मरणपूर्वक, पृथिवीस्थानीय अग्निको लागि र प्राणवायु शुद्धिको लागि म यो आहुति प्रदान गर्दछु।।१।।*
- *मन्त्रार्थ- सर्वरक्षक, सब दुखहरु बाट छुटाइदिने र चित्तस्वरूप सर्वत्र गतिशील दोषहरुलाई हटाइदिने परमात्माको प्राप्तिको लागि म आहुति प्रदान गर्दछु। यो आहुति वायु र अपान संज्ञक परमात्माको लागि हो । यो मेरो हैन । अथवा परमेश्वरको स्मरणपूर्वक*

*अन्तिरक्षस्थानीय वायुको लागि र अपान वायु शुद्धिको लागि म यो आहुति प्रदान गर्दछु ।।२।।*

- *मन्त्रार्थ- सर्वरक्षक, सुखस्वरूप एवं आनन्दस्वरूप अखण्ड र प्रकाशस्वरूप सर्वत्र व्याप्त परमात्माको प्राप्तिको लागि म यो आहुति प्रदान गर्दछु । यो आहुति आदित्य र व्यान संज्ञक परमात्माको लागि हो। यो मेरो हैन। अथवा सर्वरक्षक परमात्मालाई स्मरणपूर्वक, द्युलोकस्थानीय सूर्यको लागि र व्यान वायु शुद्धिको लागि यो आहुति प्रदान गर्दछु। यो आहुति आदित्य र व्यान वायुको लागि हो, यो मेरो हैन ।।३।।*
- *मन्त्रार्थ- सर्वरक्षक, सबका उत्पादक एवं सतस्वरूप दुखहरु दूर गरिदिने एवं चित्तस्वरूप सुख-आनन्द स्वरूप सर्वत्र व्याप्त गतिशील प्रकाशक, सबका प्राणाधार, दोषनिवारक व्यापक स्वरूप भएका परमात्माको लागि म यो आहुति पुनः प्रदान गत्दछु। यो आहुति उक्तसंज्ञक परमात्माको लागि हो, मेरो हैन। अथवा परमेश्वरको स्मरणपूर्वक, पृथिवी, अन्तिरक्ष, द्युलोक, स्थानीय अग्नि, वायु र आदित्यको लागि तथा प्राण, अपान र व्यान संज्ञक प्राणवायु शुद्धिको लागि म यो आहुति पुनः प्रदान गर्दछु ।।४।।*

**ओ३म् आपो ज्योतीरसोऽमृतं ब्रह्म भूर्भुवः स्वरों स्वाहा।।५।।**

*मन्त्रार्थ- हे सर्वरक्षक परमेश्वर तपाइँ सर्वव्यापक, सर्वप्रकाशस्वरूप एवं प्रकाशक, उपासकहरु द्वारा रसनीय, आस्वादनीय, आनन्द हेतु उपासनीय, नाशरिहत, अखण्ड, अजरअमर, सबभन्दा महान, प्राणाधार र सतस्वरूप, दुखहरु हटाइदिने र चितस्वरूप, सुखस्वरूप एवं सुखप्रदाता र आनन्दस्वरूप, सबका रक्षक हुनुहुन्छ। यी सब नाम तपाइँकै हुन्, यस्ता नाम गरेका तपाइँ परमेश्वर कै प्राप्तिको लागि म आहुति प्रदान गर्दछु।।*

**ओ३म् यां मेधां देवगणाः पितरश्चोपासते।तया मामद्य मेधयाऽग्ने मेधाविनं कुरू स्वाहा।।६।।**

*मन्त्रार्थ- हे सर्वरक्षक ज्ञानस्वरूप परमेश्वर ! जुन धारणावती - ज्ञान, गुण, उत्तम विचार आदि धारण गर्ने बुद्धिको दिव्य गुण भएका विद्वान र पालकजन माता-पिता आदि ज्ञानवृद्ध र वयोवृद्धजनले उपासना गर्दछन् अर्थात चाहन्छन् र उसको प्राप्तिका लागि यत्नशील रहन्छन्, उस मेधा बुद्धि द्वारा मलाइ आज मेधा बुद्धिवान बनाऊ। यस प्रार्थनाका साथ म यो आहुति प्रदान गर्त्दछु।।*

**ओ३म् विश्वानि देव सवितर्दुरितानि परासुव।यद भद्रं तन्न आ सुव स्वाहा ।।७।।**

*मन्त्रार्थ- हे सर्वरक्षक दिव्यगुण शक्तिसम्पन्न, सबका उत्पादक र प्रेरक परमात्मन् ! तपाइँले कृपा गरेर हाम्रा सब दुगुर्ण, दुव्यर्सन र दुखहरु हटाएर जुन कल्याणकारक गुण, कर्म, स्वभाव छन्, ति हामीलाई भलिभाँती तरिकाले प्राप्त गराउनुहोस्।।*

**अग्ने नय सुपथा राय अस्मान विश्वानि देव वयुनानि विद्वान।**
**युयोध्यस्मज्जुहुराणमेनो भूयिष्ठां ते नम उक्ति विधेम स्वाहा।।८।।**

*मन्त्रार्थ- हे ज्ञानप्रकाशस्वरूप, सन्मार्गप्रदर्शक, दिव्यसामर्थ्ययुक्त परमात्मन्! हामीलाई ज्ञानविज्ञान, ऐश्वर्य आदि प्राप्तिको लागि धमर्युक्त कल्याणकारी मार्ग बाट लैजानुहोस्। तपाइँ समस्त*

*ज्ञानविज्ञान र कर्मलाई जान्नुहुन्छ, हामि बाट कुटिलतायुक्त पापरूप कर्महरुलाई हटाइदिनुहोस्। यस हेतुले हामी तपाइको विविध प्रकारले र अधिकाधिक स्तुति-प्रार्थना-उपासना एवं सत्कार नम्रतापूर्वक गर्दछौं।*

**सन्ध्या कालीन आहुति मन्त्र:**

**ओ३म् अग्निर्ज्योतिर्ज्योतिरग्नि: स्वाहा।।१।।**

**ओ३म् अग्निवर्चो ज्योतिर्वर्च: स्वाहा।।२।।**

***यो तेस्रो मन्त्रलाई मनमा उच्चारण गरेर आहुति दिनु केवल 'ओ३म्' र 'स्वाहा' को उच्चारण बोलेर गर्नु:-***

**ओ३म् अग्निर्ज्योतिर्ज्योतिरग्नि: स्वाहा।।३।।**

**ओ३म् सजूर्देवेन सवित्रा सजुरात्र्येन्द्रवत्या जुषाणो अग्निर्वेतु स्वाहा।।४।।**

- *मन्त्रार्थ- सर्वरक्षक, सर्वत्र व्यापक, दोषनिवारक परमात्मा ज्योतिस्वरूप एवं प्रकाशस्वरूप छ, र प्रत्येक ज्योति या ज्योतियुक्त पदार्थ अग्निसंज्ञक परमात्माले व्याप्त छ। म त्यस परमात्मालाई प्राप्तिको लागि अथवा ज्योतिःस्वरूप अग्निको लागि आहुति प्रदान गर्दछु।।१।।*
- *`मन्त्रार्थ- सर्वरक्षक, सर्वत्र व्यापक, दोषनिवारक परमात्मा तेजस्वरूप छ, जसरि प्रत्येक प्रकाशयुक्त वस्तु या प्रकाश तेजस्वरूप हुन्छ, म त्यस परमात्मालाई प्राप्तिको लागि अथवा तेजःस्वरूप अग्निको लागि आहुति प्रदान गर्दछु ।।२।।*
- *मन्त्रार्थ- सर्वरक्षक, सर्वत्र व्यापक, दोषनिवारक परमात्मा ब्रह्मज्योति र ज्ञान-विज्ञानस्वरूप छ ब्रह्मज्योति र ज्ञान-विज्ञान अग्निसंज्ञक परमात्मा बाट उत्पन्न अथवा उसको द्योतक हो म त्यस परमात्मालाई प्राप्ति हेतु र सबलाई प्रकाशित गर्ने अग्निको लागि आहुति प्रदान गर्दछु ।।३।।*
- *मन्त्रार्थ- सर्वरक्षक, सर्वत्र व्यापक, दोषनिवारक, प्रकाशस्वरूप परमात्मा प्रकाशस्वरूप एवं प्रकाशक सूर्य संग से प्रीति राख्दछ तथा प्राणमयी एवं चंद्रतारक प्रकाशमयी रात्रि संग पनि प्रीति राख्दछ अर्थात, प्रीतिपूर्वक उनलाई उत्पन्न गरेर प्रकाशित गर्दछ, हामि द्वारा स्तुति गरिने त्यो परमात्मा हामीलाई प्राप्त होस्; हाम्रो अन्तःकारणमा प्रकाशित होस्। उस परमात्मा प्राप्तिको लागि म यज्ञाग्निमा आहुति प्रदान गर्दछु।।*
  *अधिदैवत पक्षमा- सबका प्रकाशक सूर्य बाट र सबका प्रेरक र उत्पादक परमात्मा बाट संयुक्त र प्राण एवं चंद्रतारक प्रकाशमयी रात्रि बाट संयुक्त भौतिक अग्निले हामि द्वारा गरिएको आहुतिदान बाट प्रशंसित गर्दै हाम्रो आहुतिलाई सम्यक प्रकारले भक्षण गरुन र तिनलाई वातावरणमा व्याप्त गर्दिउन् जसबाट यज्ञको अधिकाधिक लाभ पुगोस् ।।४।।*

सन्ध्या कालीन आहुतिका शेष समान मन्त्र:

**ओ३म् भूरग्नये प्राणाय स्वाहा।इदमग्नये प्राणाय - इदं न मम।।१।।**
**ओ३म् भुवर्वायवेऽपानाय स्वाहा।इदं वायवेऽपानाय -इदं न मम।।२।।**
**ओ३म् स्वरादित्याय व्यानाय स्वाहा।इदमादित्याय व्यानाय -इदं न मम।।३।।**
**ओ३म् भूर्भुवः स्वरिग्नवाय्वादित्येभ्यः प्राणापानव्यानेभ्यः स्वाहा।**
**इदमग्निवाय्वादित्येभ्यः प्राणापानव्यानेभ्यः - इदं न मम।।४।।**
**ओ३म् आपो ज्योतीरसोऽमृतं ब्रह्म भूर्भुवः स्वरों स्वाहा।।५।।**
**ओ३म् यां मेधां देवगणाः पितरश्चोपासते।तया मामद्य मेधयाऽग्ने मेधाविनं कुरू स्वाहा।।६।।**
**ओ३म् विश्वानि देव सवितर्दुरितानि परासुव।यद भद्रं तन्न आ सुव स्वाहा ।।७।।**
**अग्ने नय सुपथा राय अस्मान विश्वानि देव वयुनानि विद्वान।**
**युयोध्यस्मज्जुहुराणमेनो भूयिष्ठां ते नम उक्तिं विधेम स्वाहा।।८।।**
(यी मन्त्रको अर्थ प्रातःकालीन मन्त्रमा गरिएको छ।)

## *गायत्री मन्त्र:*

**अब तीन पटक गायत्री मन्त्र बोलेर तीन आहुति दिनु।**

**ओ३म् भूर्भुवः स्वः तत्सवितुर्वरेण्यं भर्गो देवस्य धीमहि।**
**धियो यो नः प्रचोदयात् स्वाहा।।** (य.३६/३)

*उस् प्राणस्वरूप, दुःखनाशक, सुखस्वरूप, श्रेष्ठ, तेजस्वी, पापनाशक, देवस्वरूप परमात्मालाई हामि अन्तःकरणमा धारण गरौँ। त्यो परमात्माले हाम्रो बुद्धिलाई सन्मार्गमा प्रेरित गरोस्।*

## *पूर्णाहुति:*

**यो मन्त्र तीन पटक बोलेर घीउले तीन पूर्णाहुति गर्नु।**

**ओउम् सर्वं वै पूर्णं स्वाहा।।**

***मन्त्रार्थ- हे सर्वरक्षक, परमेश्वर! तपाइको कृपाले निश्चयपूर्वक मेरो आजको यो समग्र यज्ञानुष्ठान पूरा भयो, म यो पूर्णाहुति प्रदान गर्दछु।***

पूर्णाहुति मन्त्रलाई तीन पटक उच्चारण गर्नु यिनै भावनाहरुको द्योतक है कि शारीरिक, आत्मिक र सामाजिक तथा पृथिवी, अन्तिरक्ष र द्युलोकको उपकारको भावनाले, एवं आध्यात्मिक, आधिदैविक र आधिभौतिक सुख प्राप्ति हेतु गरिएको यो यज्ञानुष्ठान पूर्ण भए पछी सफल सिद्ध होस्। यसको उद्देश्य पूर्ण होस्..। अस्तु..

**।।इति अग्निहोत्रमन्त्राः।।**

## *अग्निहोत्रको लागि आवश्यक सामग्री:-*

*१- समिधा (चन्दन,पलाश, समी, बर, पिपल, बेल, आँप, डुम्री आदिका आठ-आठ अंगुलका अर्थात्, यज्ञ कुण्ड अनुसार लामा-छोटा गर्नु, मलिन तथा किरा लागेको वा अपवित्र तथा दुषित नहुन्)*

*२- जल पात्र*

*३- २ चिम्टी अखंड अक्षता*

*४- गाईको घ्यू*

*५- निश्चित मापको अर्ध पिरामिड आकारको ताम्रपात्र*

*६- गाईको गोबरको गुइंठा*

*७- अग्निको स्रोत (सलाई) आदि*

*८- थाल*

*९- कटौरा*

*१०-चम्सा ठूलो तथा सानो कुण्डको माप अनुसार*

*११- धुप*

*१२-दियो बाल्ने माटाको पाला*

*१३-कपास बत्ति बनाउने*

*१४-कपूर*

*१५-जल भरिएको अम्खरा*

*१६-भए मिष्ठान्न आदि..*